نيبالي

٣



لغات

مكتب النسيم
دعوة و إرشاد

# ईश्वरीय धर्म

## नेपाली भाषामा

إن الدين عند الله الإسلام

# إن الدين عند الله الإسلام

باللغة النيبالية

# ईश्वरीय धर्म

إعداد

أبو الكلام سلطان مدني

लेखक

अबुल कलाम सुल्तान मदनी

---

المكتب التعاوني للدعوة والإرشاد وتوعية الجاليات بمحافظة

بقيق

# समर्पित

यो सानो पुस्तिका प्रत्येक व्यक्तिको नाउँमा समर्पित गरिएको छ जो आफ्नो लोक र पर्लोक दुबै जीवनमा शान्ति, कुशलता र सफलताको चाह्ना लिएर वास्तविक एश्वरीय धर्मको खोज गरिरहेका छन ।

# विषय सूची

بسم الله الرحمن الرحيم

# भूमिका

الحمد لله رب العالمين, والصلاة والسلام على سيد المرسلين نبينا محمد وعلى آله وأصحابه أجمعين, ومن تبعهم بإحسان إلى يوم الدين.

समस्त प्रशंसा अल्लाहको लागि हो जो सम्पूर्ण संसारको पालनहार (भरण पोषण कर्ता) हो । र अल्लाहका अन्तिम ईशदूत श्री महुम्मद (सल्लल्लाहु अलैहि वसल्लम) माथि र उनका परिवार, सबै साथीहरू र उनका प्रलय सम्मका अनुसरण कर्ताहरू माथि शान्ति होस् ।

विश्वका अधिकांश क्षेत्रहरूमा मुस्लिमहरू केही न केही संख्यामा आवश्य बसिरहेका छन । यसका बावजूद धेरै मानिसहरू अहिले पनि इस्लाम धर्मबाट अपरचित छन । र जुन व्यक्तिहरूलाई यस ईश्वरीय धर्मको बारेमा केही जानकारी छ उनीहरू मध्ये केही मानिसहरू यस्तो पनि छन जुन इस्लाम धर्मलाई एउटा नयाँ धर्मको रूपमा जान्द छन ।

उनीहरूको यस भ्रान्तलाई समाप्त गर्नको लागि र जुन मानिसहरू यस धर्मबाट अपरचित छन

उनीहरूलाई यसबाट परचित गराउनको लागि यो सानो पुस्तिका नेपाली भाषामा लेखिएको छ ।

यसमा ईश्वरीय धर्म इस्लामको बारेमा केही महत्वपूर्ण कुराहरू वर्णन गरिएका छन, र सबै कुराहरूलाई अल्लाहको अन्तिम पवित्र ग्रन्थ कुरआन वा उनको अन्तिम ईश्दूत श्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमका कथनहरूबाट प्रमाणित गरिने प्रयास गरिएको छ ।

मलाई आशा छ कि यो सानो पुस्तिका ती मानिसहरूलाई अति लाभ पुऱ्याउँछ जुन आफ्नो यस जीवन र यस पछि आउने जीवनमा पनि शान्ति, कुशलता र सफलताको इच्छा लिएर वास्तविक ईश्वरीय धर्मको खोज गरिरहेका छन ।

अल्लाह तआला हामी सबैलाई यसबाट लाभ उठाउने र सत्य मार्गदर्शन बूझ्ने साहस प्रदान गरुन, आमीन ।

## ईश्वरीय धर्मको पहचान :

ईश्वरीय धर्मको विषयमा पहिले यो कुरा स्पष्ट रहोस् कि ईश्वरीय धर्म त्यही हुन सक्छ जसमा ईश्वरको चाहना, इच्छा र प्रसन्नता प्राप्त भइ लोक प्रलोक दुबै जीवनमा शान्ति, सफलता र मुक्ति प्रदान होस् ।

विश्वमा अनेकौं धर्महरू पाइन्छन जस मध्ये एउटा प्रसिद्ध धर्म इस्लाम पनि हो, हामी यस कुरा माथि विश्वास राख्दछौं कि इस्लाम धर्म नै ईश्वरीय धर्म हो किनभने त्यसका समस्त शिक्षाहरूमा हामी ईश्वरको इच्छा र चाहना प्रति पूर्ण समर्पणको निर्देशन पाउँछौं र त्यसैको अनुसरणमा पूर्ण शान्ति, कुशलता, सफलता र मुक्ति हेरिन्छ ।

यस कुराको सत्यता र यर्थाता बूझ्नको लागि इस्लाम धर्मको वारेमा केही कुराहरू प्रस्तुत छन ।

## इस्लाम शब्दको अर्थ र परिभाषा

इस्लाम एउटा अरबी शब्द हो जसको अर्थ हो हुकुम मान्नु, आज्ञा पालन गर्नु र आत्म-समर्पण गर्नु ।

इस्लाम शब्दको यही अर्थ लिएर यसको परिभाषा यस प्रकार गरिन्छ: अल्लाहलाई नै सम्पूर्ण ब्राहमाण्डको पालनहार, स्वामी, ईश्वर, र सत्य पूज्य मानेर उनैको आदेशहरू अनुसार जीवन व्यतीत गर्नु उनैको पूजा पाठ गर्नु र उनको पूजा पाठ आदिमा अरु कसैलाई सहभागी बनाउनुबाट बँच्नु । अल्लाहले आफ्नो पवित्र ग्रन्थ कुरआनमा भन्नु भयो :

(وَمَنْ أَحْسَنُ دِيناً مِمَّنْ أَسْلَمَ وَجْهَهُ لِلَّهِ وَهُوَ مُحْسِنٌ) (النساء: من الآية١٢٥)

**अर्थ :** र उस भन्दा उत्तम धर्म वाला को हुन सक्छ जसले अल्लाहको प्रति पूर्ण आत्म-समर्पण गरिदिओस् र त्यो सदाचारी पनि होस् । (सूरः अन्निसा १२५)

र अल्लाहले अर्को ठाउँमा भन्नु भयो :

(فَإِلَهُكُمْ إِلَهٌ وَاحِدٌ فَلَهُ أَسْلِمُوا) (الحج: من الآية٣٤)

**अर्थ :** तिमीहरूको सत्य पूजनिय मात्र एउटै हो, त्यसर्थ तिमीहरू उनैको अधीन र आज्ञाकारी बन । (सूरः अलहज्ज २२/३४)

इस्लामको जुन परिभाषा बयान गरिएको छ त्यस बमोजिम यो शब्द अल्लाहको तर्फबाट पठाइएका सम्पूर्ण दूतहरूको धर्मलाई सम्मिलित छ र यसै अर्थ अनुसार हामी यो भन्न सक्छौं कि अल्लाह निर

स्वीकार्य धर्म र सबै दूतहरूको धर्म इस्लाम नै हो किनभने अल्लाहका सबै दूतहरूले आ-आफ्ना अनुयायीहरूलाई तौहीद अर्थात पूजा पाठ आदिमा अल्लाहलाई एक मानिने, र उनैको समक्ष आत्म-समर्पण गरिने आदेश दिए र शिर्क अर्थात पूजा पाठ आदिमा अल्लाह संग कसै अरूलाई सहभागी बनाउनु बाट मनाही गरे ।

इस्लामको अर्को परिभाषा जुन अल्लाहको अन्तिम संदेष्टा श्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम ले गर्नु भएको हो त्यो यस प्रकार छ

" الإسلام أن تشهد أن لا إله إلا الله وأن محمدا رسول الله , وتقيم الصلاة, وتؤتي الزكاة, وتصوم رمضان, وتحج البيت إن استطعت إليه سبيلا " (رواه البخاري ومسلم)

**अर्थ :** इस्लाम यो हो कि तपाई यस कुराको साक्षी बक्नुस कि अल्लाह बाहेक कोही सत्य पूजनिय छैन र मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम अल्लाहको रसूल र संदेष्टा हुन, र नमाज पढनुस्, जकात (दान) दिनुस्, रमजान महीनाको ब्रत बस्नुस् र यदि पवित्र काबाको हज्ज अर्थात : दर्शन र परिकमा गरिने क्षम्ता छ भने हज्ज पनि गर्नुस् । (बुखारी र मुस्लिम)

इस्लामको यो परिभाषा अल्लाहको अन्तिम संदेष्टा श्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम माथि अवतरित गरिएको निर्देशन र शरीअत(नियम, विधि) संग खास छ ।

## इस्लामका स्तम्भहरू :

अल्लाहको संदेष्टा श्री मुहम्द सल्लल्लाहु अलैहि वसल्लम माथि अवतरित गरिएको इस्लाम धर्मका पांच वटा आधारहरू छन :

पहिलो : एकेश्वरवाद र ईशदूतत्वको गवाही दिनु, यो सब भन्दा महत्वपूर्ण र मूल स्तम्भ हो, यसमा दुई भाग छन :

(१) एकेश्वरवादको गवाही दिनु, अर्थात यस कुराको साक्षी बक्नु कि अल्लाह वाहेक कोही सत्य पूज्निय छैन, मात्र अल्लाह नै उपास्य योग्य हुनु हुन्छ किनभने अल्लाह नै सम्पूर्ण ब्राहमाण्डको स्वामी, पालनकर्ता, अन्नदाता र नाफा नुक्सानको मालिक हुनु हुन्छ । यी कुराहरू माथि विश्वास गरि हामी माथि अनिवार्य छ कि मात्र उनकै पूजा गरौं, उनी वाहेक कसै अरूको पूजा पाठ नगरौं ।

(२) ईश्दूतत्वको गवाही दिनु, अर्थात यस कुराको साक्षी बक्नु कि श्री मुहम्द सल्लल्लाहु अलैहि वसल्लम अल्लाहको संदेष्टा र अन्तिम नवी हुनु हुन्छ, यस कुराको गवाही दिए पछि उहाँकै निर्देशन अनुसार जीवन व्यतीत गर्नु अनिवार्य छ ।

दोस्रो : नमाज पढनु, यो एकेश्वरवाद र ईशदूतत्वको गवाही पछि सब भन्दा महत्पूर्ण स्तम्भ र आधार हो, र यो दिन रातिमा सवै मुसलमानहरू माथि पांच चोटि पढनु अनिवार्य गरिएको छ ।

तेस्रो : जकात (दान) दिनु, यो धनिवान व्यक्तिहरू माथि अनिवार्य गरिएको हो, जुन उनीहरूको धन माल मध्ये लिएर निर्धन, गरीब र आवश्यक्ताधीन हरूमा वितरण गरिने छ ।

चौथो : हरेक वर्ष रमजान महीनामा ब्रत बस्नु, जुन बिहान देखि सूर्यास्त सम्म खानु, पिउनु र संभोग आदिवाट रुकेर गर्नु पर्छ ।

पांचौ : पवित्र कावाको हज्ज (दर्शन, परिकमा र अन्य निश्चित कार्यहरू) गर्नु, जुन अरवको प्रसिद्व नगर मक्कामा स्थित छ । यो ती मुसलमानहरू माथि अनिवार्य छ जुन मक्का सम्म आवत जावत

सबै खर्चहरू तिर्न सक्ने क्षमता राख्छन् र यो उमेर भरमा एक चोटि गर्नु अनिवार्य छ ।

यी पांचवटा उपर्युक्त कुराहरू श्री मुहम्मद सल्लल्लाहु अलेहि वसल्लमले ल्याएको इस्लाम धर्मका स्तम्भ र आधार हुन् जस माथि इस्लाम धर्मको निव राखिएको हो ।

## इस्लाम शान्ति र सुरक्षाको धर्म

इस्लाम शब्दको अर्थ र परिभाषाको अंतर्गतमा नै एउटा कुरा यो पनि स्पष्ट रहोस् कि इस्लाम शब्द चाहीं अरबी भाषामा स ल म बाट बनेको हो जुन शान्ति र सुरक्षा आदि अर्थहरूमा प्रयोग हुन्छ, जस्तो अल्लाहको संदेष्टा श्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लम को कथन छ :

" المسلم من سلم المسلمون من لسانه ويده " ( رواه البخاري ومسلم )

**अर्थ :** मुसलमान त्यो हो जसको जिब्रा र हातबाट अर्का मुसलमानहरू सुरक्षित रहुन ।

मौसूफको यस कथनमा यो शब्द सुरक्षाको अर्थमा प्रयोग भएको हो, जसबाट यो कुरो सिद्ब हुन्छ कि इस्लाम धर्म शान्ति र सरुक्षाको धर्म हो, अशान्ति र आतंकको धर्म होइन ।

मानिसले जुन बेला अल्लाहको चाहना प्रति पूर्ण समर्पण गर्न थाल्छ अनि उनैको आदेश र आज्ञानुसार आफ्नो जीवन व्यतीत गर्छ त्यंस बेला उसलाई वास्तविक शान्ति प्राप्त हुन्छ, उसको जीवन, हृदय र समाजमा पनि यसैबाट शान्ति र सुरक्षाको स्थाप्ना हुन्छ । तर विश्वका धेरै मानिसहरू जसलाई इस्लामी शिक्षाहरूको बारेमा कुनै विशेष जानकारी छैन, उनीहरू रेडियो, टिभी र पत्र-पत्रिकाहरूमा कहिले काहिं इस्लाम धर्मको बारेमा अनुचित कुराहरू सुन्छन् र पढ्छन्, जसले गर्दा यस साँचो, पवित्र र ईश्वरिय धर्मबाट घिर्णा गर्छन् ।

मीडियाहरूमा कहिले काँहिं इस्लाम धर्ममा लागू गरेका विभिन्न किसिमका पापी र अपराधीहरूका लागि कठिन सजाय र दंडहरू र कहिले काँहीं महिलाहरूको अधिकार र हक होकूकको विषय लिएर इस्लाम धर्म माथि खंडन र आलोचना गरिन्छ तर यसको यथार्थता के हो ? यो कुरा तपाईहरूलाई इस्लाम धर्मको शिक्षाहरूका अध्यन गरे पछि थाहा हुन्छ ।

महिलाहरूको हक होकूकको बारेमा सत्यता यो हो कि इस्लाम धर्मले महिलाहरूका लागि जुन अधिकारहरू दिएकोछ त्यो कुनै पनि धर्म र कुनै पनि कानूनमा छैन, यदि तपाई यो सत्यता राम्री बूझ्न चाहनु हुन्छ भने इस्लाम धर्मको अध्यन गर्नुस सत्यता र यथार्थता थाहा भइहाल्छ ।

इस्लाम र मुसलमानहरू माथि आतंक र उग्रवादको आरोप पनि धेरै प्रसिद्व छ तर यसमा पनि केही सत्यता र यथार्थता छैन, किनभने यदि कुनै व्यक्ति वा कुनै समूह माथि कुनै प्रकारको अत्याचार होस् भने त्यो व्यक्ति वा त्यो समूह आफू माथि भइरहेको अत्याचार रोक्ने प्रयास गर्छ त यस्तो स्थितिमा आफू माथि भइरहेको अत्याचार रोकिनेलाई आतंकवाद भन्न सकिन्न बरु अत्याचार गरिने नै आतंकवाद हो । उदाहरणको लागि तपाईहरूले कुकुर र बिरालोको लडाई हेर्नु भएको होला, पहिले कुकुर नै बिरालो माथि आकमण गर्छ त्यस पछि कहिले काँहीं उचित दावँ मिल्यो भने बिरालोले पनि कुकुरको अत्याचारको जवाफमा आफ्नो बचाउ र सुरक्षाको लागि पंजा चलाउँछ, यस्तो स्थितिमा कुकुरलाई आतंकवाद भनिनेछ

कि बिरालोलाई ? समझदार व्यक्तिले त कुकुरलाई नै आतंकवाद भन्छ बिरालोलाई होइन ।

सउदी अरबमा काम गरिने मानिसहरूलाई यहाँको सुरक्षा र शान्तिको बारेमा राम्रो अनुभव र जानकारी होला, यहाँको शान्ति र सुरक्षा यहाँको राम्रो कानूनको कारणले हो, जुन कानून र संविधान इस्लामी कानूनबाट लिइएको हो ।

## इस्लामको नामाकरण

संसारमा जति पनि धर्महरू छन सबैको नाउँ कि त कुनै विशेष व्यक्तिको नाउँमा राखिएको हो, कि त कुनै जाति आदिको नाउँमा, उदाहरणको लागि कश्च्यान धर्म यिशू मसीह (जेसस काइस्ट) को नाउँमा प्रसिद्ध भएको हो, यस्तै बौद्ध धर्मको नाउँ यस धर्मको प्रवर्तक गौतम बुद्धको नाउँमा राखिएको हो, ज्रदुश्ती धर्मको नाउँ यस धर्मको प्रवर्तक जर्दुश्तको नाउँमा राखिएको हो, यहूदी धर्मको नाउँ एक विशेष जाति यहूदाको नाउँमा राखिएको हो जसमा यसको जन्म भएको हो ।

यस्तै हाल अरू धर्महरूको पनि हो, तर इस्लाम धर्मको विशेषता के छ भने यसको संमबन्ध कुनै

व्यक्ति वा कुनै जाति सित छैन, बरु यो धर्मले एउटा विशेष गुण प्रकट गरिरहेकोछ, जुन इस्लाम शब्दको अर्थमा पाइन्छ ।

यो ईश्वरिय धर्म इस्लामका गुण र विशेषताहरू मध्ये एउटा ठूलो विशेषता हो ।

केही मानिसहरू इस्लाम धर्मलाई मोहमडन इज्म वा मोहमडन धर्म भन्दछन् तर यो कुरा चाहीं उनीहरूको अनभिज्ञको कारणले हो ।

यस धर्मको नाउँ इस्लाम र यसलाई मानिने मानिसहरूलाई मुस्लिम अल्लाहले नै राख्नु भएका हुन जस्तो पवित्र कुरआनमा भन्नु भएको छ :

( الْيَوْمَ أَكْمَلْتُ لَكُمْ دِينَكُمْ وَأَتْمَمْتُ عَلَيْكُمْ نِعْمَتِي وَرَضِيتُ لَكُمُ الْأَسْلامَ دِيناً ) (المائدة: من الآية٣)

अर्थ : आज मैले तिम्रा लागि तिम्रा धर्मलाई पूरा गरि दिएं र तिमीहरू माथि आफ्नो अनुकम्पा पुरा गरिदिएं र तिमीहरूका लागि इस्लाम धर्मलाई पसन्द गरें । (सूरः अल-माईदा ५/३)

र अर्को श्लोकमा भन्नु भयो :

( إِنَّ الدِّينَ عِنْدَ اللَّهِ الإِسْلامُ ) (آل عمران: من الآية١٩)

**अर्थ :** निःसन्देह अल्लाह निर स्वीकार्य धर्म इस्लाम नै हो । (सूरः आलइमरान ३/१९)

र अर्को ठाउँमा अल्लाहले भन्नु भयो :

( هُوَ سَمَّاكُمُ الْمُسْلِمِينَ مِنْ قَبْلُ وَفِي هَذَا ) (الحج: من الآية٧٨)

**अर्थ :** उनले नै (अर्थात अल्लाहले) तिमीहरूको नाउँ कुरआन भन्दा पहिले र यसमा पनि मुस्लिम राख्नु भएको हो । (सूरः अलहज्ज २२/७८) ।

# ईस्लाम कुनै नयाँ धर्म होइन

केही मानिसहरू इस्लाम धर्मलाई एउटा नयाँ धर्म बूझ्दछन्, तर वास्तविक कुरो के छ भने इस्लाम धर्म चाँहीं कुनै नयाँ धर्म होइन, वरु यो सब भन्दा पुरानो धर्म हो, जसको प्रचार प्रसार हरेक ईशदूत आ-आफनो युगमा गर्नु भएका छन्, अनि त्यसैको पूर्ण स्वरूप अल्लाहको अन्तिम ईशदूत श्री मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ले प्रलय सम्मको लागि संसारको समक्ष प्रस्तुत गर्नु भएको छ ।

अल्लाहको अन्तिम पवित्र ग्रन्थ कुरआन र उनको अन्तिम ईशदूत श्री मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) को अनेकौं कथनहरूद्वारा यो कुरो प्रमाणित हुन्छ कि यस संसारमा जति पनि दूत र संदेष्टाहरू अल्लाहको तर्फबाट आउनु भए सबैको मूल निमन्त्रण र संदेश एउटै थियो कि एक ईश्वर अल्लाह कै पूजा गरियोस् र शिर्क (अल्लाहको पूजा पाठ आदिमा कसै अरूलाई सहभागी बनाउनु) बाट वचियोस् । जस्तो आल्लाहले भन्नु भयो :

(وَلَقَدْ بَعَثْنَا فِي كُلِّ أُمَّةٍ رَسُولاً أَنِ اعْبُدُوا اللَّهَ وَاجْتَنِبُوا الطَّاغُوتَ)(النحل: من الآية ٣٦)

अर्थ : हामीले हरेक समुदायमा एउटा रसूल (संदेष्टा) पठायों कि तिमीहरू अल्लाहको पूजा गर र तागूत (अल्लाह बाहेक कुनै पनि चीजको उपासना) बाट बच।

**तागूतको परिभाषा** : अल्लाह बाहेक जसको पनि पूजा यस संसारमा भईरहेछ सबैलाई तागूत भनिन्छ, र अल्लाह बाहेक कसै अरूको पूजा गर्नु शिर्क हो र शिर्कबाट अल्लाहको सम्पूर्ण दूत र संदेष्टाहरूले मनाही गरेका छन्।

**शिर्कको परिभाषा** : अल्लाहको पूजा पाठमा कसै अरूलाई सहभागी बनाउनालाई शिर्क भनिन्छ।

अल्लाह तआलाका सम्पूर्ण संदेष्टाहरू मध्ये सव भन्दा पहिलो संदेष्टा (रसूल) नूह (अलैहिस्सलाम) हुन्। उहाँलाई जव अल्लाहले आफ्नो दूत बनाएर उनको समुदाय तिर पठाउनु भयो त उहाँले आफ्नो समुदायलाई के भन्नु भयो ? यसको जानकारी दिँदै अल्लाहले पवित्र कुरआनमा भन्नु हुन्छ :

(وَلَقَدْ أَرْسَلْنَا نُوحاً إِلَى قَوْمِهِ فَقَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُمْ مِنْ إِلَهٍ غَيْرُهُ
)(المؤمنون: من الآية٢٣)

**अर्थ :** हामीले नूहलाई उनको समूदाय तिर पठायौं त उहाँले भन्नु भयो : हे मेरो समुदायका मानिसहरू ! तिमीहरू अल्लाह कै पूजा गर, उनी बाहेक तिमीहरूका लागि कोही पनि वास्तविक उपास्य छैन। (सूरः अलमूमिनून २३)

यस्तै अल्लाहले आफ्नो रसूल हूद (अलैहिस्सलाम) को चर्चा गर्दै भन्नु भयो :

(وَإِلَى عَادٍ أَخَاهُمْ هُوداً قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُمْ مِنْ إِلَهٍ غَيْرُهُ)(هود: من الآية٥٠)

**अर्थ :** हामीले आद (समुदाय) को तर्फ उनको भाई हूदलाई पठायौं त उहाँले भन्नु भयो : हे मेरो समुदायका मानिसहरू ! तिमीहरू अल्लाह कै पूजा गर, त्यो बाहेक तिम्रा लागि कोही वास्तविक पूजनिय छैन। (सूरः हूद ५०)

यस्तै अल्लाहले आफ्नो संदेष्टा हजरत सालेह (अलैहिस्सलाम) को बारेमा पनि जानकारी दिँदै भन्नु भयो :

( وَإِلَى ثَمُودَ أَخَاهُمْ صَالِحاً قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُمْ مِنْ إِلَهٍ غَيْرُهُ)
(هود: من الآية٦١)

**अर्थ :** र समूदको तर्फ उनको भाई सालेहलाई पठायौं त उहाँले भन्नु भयो : हे मेरो समुदायका मानिसहरू ! तिमीहरू अल्लाहको पूजा गर, तिमीहरूका लागि अल्लाह बाहेक कोही पनि वास्तविक पूजनिय छैन । (सूरः हूद ६१)

र यस्तै शुऐब (अलैहिस्सलाम) को चर्चा गर्दै अल्लाहले भन्नु भयो :

( وَإِلَى مَدْيَنَ أَخَاهُمْ شُعَيْباً قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُمْ مِنْ إِلَهٍ غَيْرُهُ )
(هود: من الآية٨٤)

**अर्थ :** मदयनको तर्फ हामीले उनको भाई शुऐबलाई पठायौं त उहाँले भन्नु भयो : हे मेरो समुदायका मानिसहरू हो ! तिमीहरू अल्लाहको पूजा गर, तिम्रा लागि अल्लाह बाहेक कोही वास्तविक पूजनिय छैन ।

हजरत इब्राहीम (अलैहिस्सलाम) को चर्चा गर्दै अल्लाहले कुरआनमा भन्नु भयो :

(وَإِذْ قَالَ إِبْرَاهِيمُ لِأَبِيهِ وَقَوْمِهِ إِنَّنِي بَرَاءٌ مِمَّا تَعْبُدُونَ إِلَّا الَّذِي فَطَرَنِي)
(الزخرف:٢٦،٢٧)

**अर्थ :** र जब इब्राहीमले आफ्नो पिता र आफ्नो समुदायका मानिसहरू सित भन्नु भयो कि म आफ्नो पालनहार बाहेक ती सम्पूर्ण वस्तुहरूबाट बरी (स्वच्छन्द) छु जसलाई तपाईहरू पूजा गर्दै हुनु हुन्छ ।

र मूसा (अलैहिस्सलाम) ले आफ्नो अनुयायीहरू सित भन्नु भयो :

( إِنَّمَا إِلَهُكُمُ اللَّهُ الَّذِي لا إِلَهَ إِلَّا هُوَ وَسِعَ كُلَّ شَيْءٍ عِلْماً) (طـه:٩٨)

**अर्थ :** तिमीहरूको ईश्वर त अल्लाह नै हो जस बाहेक कोही वास्तविक पूजनिय छैन, र उसको ज्ञान समस्त वस्तुहरूलाई घेरामा लिएको छ ।

र यीशू मसीह (अलैहिस्सलाम) ले आफ्नो अनुयायीहरू सित भन्नु भयो :

( يَا بَنِي إِسْرائيلَ اعْبُدُوا اللَّهَ رَبِّي وَرَبَّكُمْ إِنَّهُ مَنْ يُشْرِكْ بِاللَّهِ فَقَدْ حَرَّمَ اللَّهُ عَلَيْهِ الْجَنَّةَ وَمَأْوَاهُ النَّارُ وَمَا لِلظَّالِمِينَ مِنْ أَنْصَارٍ) (المائدة: من الآية٧٢)

यीशू मसीहले भन्नु भयो : हे इज़राईलका संतानहरू हो ! तपाईहरू अल्लाह कै पूजा गर जो मेरो पनि रब (पालनकर्ता) हो र तिमीहरूको पनि रब हो ।

(साथै यो पनि स्पष्ट रहोस्) कि जसले अल्लाह संग कसैलाई सहभागी बनाउँछ (अर्थात अल्लाह बाहेक कसै अरूको पूजा पाठ गर्छ) त अल्लाहले उस माथि स्वर्ग हराम गरि दिन्छन् (वर्जित पार दिन्छन) र उसको ठेगाना नरक हो, र शिर्क गरिने मानिसहरूको लागि कोही मद्दतकर्ता हुँदैन । (अलमाईदा ७२)

यस संसारमा ईश्वर (अल्लाह) को तर्फबाट अनेकौं दूत र संदेष्टाहरू आए र सबैले आ-आफ्नो अनुयायीहरूलाई मात्र एक ईश्वर अल्लाह कै पूजा गरिने आदेश दिए ।

सव भन्दा अन्तिम ईश्दूत हजरत मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) हुनु हुन्छ, उहाँलाई पनि अल्लाहले यही संदेश दिएर पठाउनु भयो :

( قُلْ إِنَّمَا أَنَا مُنْذِرٌ وَمَا مِنْ إِلَه إِلَّا اللَّهُ الْوَاحِدُ الْقَهَّارُ ) (ص:٦٥)

**अर्थ** : तपाई भनिदिनुस कि म त मात्र डराउने वाला (र यो वताउने वाला हुँ) कि एक जवरदस्त अल्लाह वाहेक कोही वास्तविक पूजनिय छैन ।

यी सवै कुराहरू जुन मैले ईश्दूतहरूको संदेशको वारेमा बयान गरें, यी सवै अल्लाहको अन्तिम पवित्र

ग्रन्थ कुरआनका पानाहरूबाट लिइएका छन । जस बाट थाहा हुन्छ कि यस संसारमा ईश्वरको तर्फबाट अनेकौं दूत र संदेष्टाहरू पठाइएका छन् बरु हरेक समुदायमा एक एक रसूल पठाइएका थिए, जस मध्ये सब भन्दा अन्तिम संदेष्टा हजरत मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) हुनु हुन्छ । र सबै संदेष्टाहरूको मूल निमंत्रण आ-आफ्नो अनुयायीहरूको लागि यो नै थियो कि उनी मात्र एक ईश्वर अल्लाह कै उपासना गरुन, र उसको पूजा पाठमा कसैलाई सहभागी न बनाउन् किनभने अल्लाह बाहेक कोही वास्तविक उपास्य छैन । पवित्र कुरआनमा अल्लाहले भन्नु भएको छ :

( وَمَا أَرْسَلْنَا مِنْ قَبْلِكَ مِنْ رَسُولٍ إِلَّا نُوحِي إِلَيْهِ أَنَّهُ لا إِلَهَ إِلَّا أَنَا فَاعْبُدُونِ) (الانبياء:٢٥)

**अर्थ** : हामीले तिमी भन्दा जुन पनि रसूल पठायौं उसको तर्फ यही ईश्वाणी पठायौं कि म बाहेक कोही सत्य पूजनिय छैन, त्यसर्थ तिमीहरू मेरो नै पूजा गर । (सूरः अँबिया २५)

यस संसारमा पठाइएको कुनै पनि ईश्दूत रिषि मुणि, रसूल पैगाम्बर, प्रोफेट र संदेष्टाले आफ्नो

वा कसैको पूजा पाठ गरिने आदेश दिएको छैन, बरु सबैले मात्र एउटै अल्लाहको पूजा पाठ र आराधना गर्ने आदेश दिएका छन्।

पवित्र कुरआनमा अल्लाहले भन्नु भएको छ :

( وَاسْأَلْ مَنْ أَرْسَلْنَا مِنْ قَبْلِكَ مِنْ رُسُلِنَا أَجَعَلْنَا مِنْ دُونِ الرَّحْمَنِ آلِهَةً يُعْبَدُونَ) (الزخرف:٤٥)

हामीले जुन संदेष्टाहरूलाई तिमी भन्दा पहिले पठायौं उनीहरू सित सोध्नु होस् कि के हामीले दयालु (अल्लाह) बाहेक कोही अर्को देवी देवताहरू बनायौं जसलाई पूजियोस्? निःसंदेह यस प्रश्नको जवाफ नकारात्मक हुन्छ। अब यस तपसीलबाट प्रमाणित र स्पष्ट भई हाल्यो कि अल्लाहको तर्फबाट पठाइएका सबै ईश्दूतहरूको आमन्त्रण र सबैको धर्म एउटै थियो र त्यो हो : मात्र एक ईश्वर कै पूजा पाठ गर्नु, उसैको आज्ञा पालन गर्नु, उसैको चाहना र इच्छा प्रति पूर्ण समर्पण गर्नु, र यहि इस्लाम शब्द को अर्थ पनि हो, र यही अर्थ लिएर हामी यो भन्न सक्छौं कि अल्लाहको तर्फबाट पठाइएका सम्पूर्ण दूतहरूको धर्म एउटै थियो र त्यो इस्लाम नै थियो किनभने सबै संदेष्टाहरूको

निमंत्रणको नीव तौहीद (एकेश्वरवाद) मा नै निर्भर थियो । र हदीसमा अल्लाहको रसूल श्री मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) ले भन्नु भएको छ :

( الأنبياء إخوة لعلات أمهاتهم شتى ودينهم واحد ) رواه البخاري ومسلم

ईश्दूतहरू आपसमा एक अर्काका सौतीला भाई हुन, उनीहरूका आमाहरू छुट्टा छुट्टै हुन् र उनीहरूको धर्म एउटै हो । र यसै धर्मको वसीयत ईश्दूतहरूले आफ्ना संतानहरूलाई पनि दिनु भएका थिए जस्तो आदर्णीय ईश्दूत श्री इब्राहीम अलैहिस्सलाम तथा आदर्णीय याकूब अलैहिस्सलाम को चार्चा गर्दै अल्लाहले भन्नु भयो :

( وَوَصَّى بِهَا إِبْرَاهِيمُ بَنِيهِ وَيَعْقُوبُ يَا بَنِيَّ إِنَّ اللَّهَ اصْطَفَى لَكُمُ الدِّينَ فَلا تَمُوتُنَّ إِلَّا وَأَنْتُمْ مُسْلِمُونَ) (البقرة: ١٣٢)

यसैको वसीयत इब्राहीम र याकूवले आ-आफ्ना संतानहरूलाई गरे कि हे हाम्रो संतानहरू हो ! अल्लाह तआला ले तिम्रा लागि यस धर्मलाई निर्धारित गरेका हुन्, त्यसर्थ तिमीहरूको मृत्यु इस्लाम कै अवस्थामा होस् । तर यो कुरो पनि स्पष्ट रहोस कि सबै ईश्दूतहरूका लागि अल्लाह तआलाले

उनको जमाना र समय अनुसार पूजा पाठ गरिने तरीका, नियम काननूहरू भिन्न-भिन्न बनाउनु भएको थियो जस्तो कुरआनमा अल्लाहले भन्नु भएको छ :

( لِكُلٍّ جَعَلْنَا مِنْكُمْ شِرْعَةً وَمِنْهَاجاً ) (المائدة: من الآية٤٨)

**अर्थ** : हामीले तिमीहरू मध्ये हरेकका लागि अलग-अलग शरीअत र तरीका बनाएका छौं । यस श्लोकबाट हामीलाई चाहीं के थाहा भयो भने कि सम्पूर्ण संदेषटाहरू एउटै ईश्वरको पूजा पाठ गर्दथे, र आ-आफ्नो अनुयायीहरूलाई एउटै ईश्वरको पूजा गर्ने आदेश पनि दिए तर सबैको तरीका अलग अलग थियो । सम्पूर्ण ईश्दूतहरू मध्ये अन्तिम ईश्दूत जसलाई ईश्वरले यस संसारमा प्रलय सम्मको लागि पठाउनु भयो श्री मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) को पनि मूल निमन्त्रण र धर्म पहिलेका संदेष्टाहरू जस्तै हो, तर शरीअत, तौर तरीका, नियम कानूनहरूमा केही अन्तर अवश्य पाइन्छ र त्यही नियम कानूनहरू उनी पछि प्रलयको दिन सम्मका समस्त मानिसहरूको लागि हो, कोही अमेरिकाको वासी होस् चाहे जर्मन, वा फ्रान्सको होस्, अथवा अरबको होस्, अथवा भारत

वा नेपालको होस्, कुनै पनि ठाउँको होस्, र कुनै पनि वंश र थरको होस् सबैका लागि वास्तविक माननीय र स्वीकार्य धर्म इस्लाम नै हो, इस्लाम धर्म मुसलमान भन्ने कुनै विशेष वंश, वर्ग र थरका लागि खास होइन, बरु सम्पूर्ण मानिसहरूका लागि हो, किनभने ईश्वरले आफ्नो ईश्दूत श्री मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) लाई सम्पूर्ण मानिसहरू तिर संदेशवाहक बनाएर पठाउनु भएको हो, जस्तो कुरआनमा अल्लाहले भन्नु भएको छ :

(وَمَا أَرْسَلْنَاكَ إِلَّا كَافَّةً لِلنَّاسِ بَشِيراً وَنَذِيراً وَلَكِنَّ أَكْثَرَ النَّاسِ لا يَعْلَمُونَ)(سبأ:٢٨)

अर्थ : र हामीले त तपाईंलाई सम्पूर्ण मानिसहरूको लागि शुभसूचक र सतर्क गरिने वाला बनाएर पठाएका छौं, तर अधिक्तर मानिसहरू आज्ञानी छन । र अर्को ठाउँमा अल्लाहको कथन छ :

( قُلْ يَا أَيُّهَا النَّاسُ إِنِّي رَسُولُ اللَّهِ إِلَيْكُمْ جَمِيعاً الَّذِي لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ لا إِلَهَ إِلَّا هُوَ يُحْيِي وَيُمِيتُ فَآمِنُوا بِاللَّهِ وَرَسُولِهِ النَّبِيِّ الْأُمِّيِّ الَّذِي يُؤْمِنُ بِاللَّهِ وَكَلِمَاتِهِ وَاتَّبِعُوهُ لَعَلَّكُمْ تَهْتَدُونَ) (الأعراف:١٥٨)

अर्थ : हे मानिसहरू हो ! म तिमी सबै तिर त्यो अल्लाहको संदेष्टा हुँ जसको राज्य समस्त

आकाशहरू र पृथ्वीमा छ, त्यो बाहेक कोही पनि वास्तविक पूजनिय छैन, उहाँले नै जीवन प्रदान गर्नु हुन्छ र मृत्यु प्रदान गर्नु हुन्छ त्यसर्थ 'तिमीहरू अल्लाह र उसको अभिज्ञ दूतहरू माथि विश्वास गर्नुस् जुन (ईश्दूत) अल्लाह र उसको निर्देशन माथि विश्वास राख्दछ र तिमीहरू उनको अनुसरण गर्नुस् जस्ले गर्दा तिमीहरू सत्य मार्गमा आई हाल । (सूरः अलआराफ १५८)

अब यो कुरो सिद्व भइ हाल्यो कि मुहम्मद (सल्लल्लाहु अलैहि वसल्लम) कुन नयाँ धर्म लिएर आउनु भएको थिएन बरु उहाँले त्यही ईश्वरीय धर्मको पूर्णस्वरूप प्रस्तुत गर्नु भएको थियो जसलाई लिएर समस्त संदेष्टाहरू आउनु भएका थिए र उनको दूतत्व विश्वव्यापी हो र उहाँ समस्त मानव र जिन्नको लागि ईश्दूत बनाई पठाइएको हुनु हुन्थ्यो । त्यसर्थ अब मार्गदर्शन मात्र इस्लाम धर्ममा छ, इस्लाम बाहेक कोही अर्को धर्म अल्लाह कहाँ स्वीकार्य हुँदैन, जस्तो अल्लाहले आफ्नो पवित्र ग्रन्थ कुरआन करीममा भन्नु भयो :

(وَمَنْ يَبْتَغِ غَيْرَ الْأَسْلامِ دِيناً فَلَنْ يُقْبَلَ مِنْهُ وَهُوَ فِي الْآخِرَةِ مِنَ الْخَاسِرِينَ)(آل عمران:٨٥)

**अर्थ :** यदि कोही व्यक्ति इस्लामको अतिरिक्त कुनै अन्य धर्म खोज्छ भने उसको त्यो धर्म स्वीकार्य हुँदैन र ऊ व्यक्ति प्रलोकमा क्षति ग्रस्तहरू मध्ये हुने छ । अर्को ठाउँमा अल्लाहको कथन यस प्रकार छ :

( إِنَّ الدِّينَ عِنْدَ اللّٰهِ الإِسْلامُ ) (آل عمران: من الآية١٩)

**अर्थ :** निःसन्देह अल्लाह निर स्वीकार्य धर्म इस्लाम नै हो । (सूरः आलइमरान ३/१९)

## अन्तिम ईश्दूत श्री मुहम्मद (सलम.) हिन्दू धर्मका ग्रन्थहरूमा :

श्री मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम अल्लाहको अन्तिम ईश्दूत हुनु हुन्थ्यो यो इस्लाम बाहेक अरू धर्महरूका धार्मिक पुस्तकहरूबाट पनि प्रमाणित हुन्छ जस्तो हिन्दू धर्मका पूराणहरूमा एउटा नबी कल्कि अवतारको अवतरित हुनुको बारेमा संकेत पाइन्छ र त्यसमा उनका केही विशेषताहरू पनि वयान गरिएका छन ती सबै विशेषताहरू श्री मुहम्मद सल्लल्लाहु अलेहि वसल्लममा पूर्ण रूपमा पाइन्छन उदाहरणको लागि केही विशेषताहरू प्रस्तुत छन :

(१) भविष्य पूराणमा लेखिएको छ कि कल्कि अवतारको नाउँ सर्वअनमा हुने छ ।

**सर्वअनमाको अर्थ हो :** जसको सव भन्दा वढी प्रशंसा गरियोस् यहि अर्थ मुहम्मद (उहाँ माथि शान्ति होस्) को पनि हो, र केही श्लोकहरूमा उनको नाउँ महामद पनि आएको छ जुन मुहम्मद जस्तै हेरिन्छ ।

(२) उसको पिताको नाम विष्णु वैश हुने छ । (कल्कि पूराण अ. २ श्लोक ११) श्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको पिताको नाउँ अब्दुल्लाह थियो, अब्दुल्लाह र विष्णु वैशको अर्थ एउटै हो ।

(३) उसको माताको नाउँ सोमती हुने छ । (भाग्वत पूराण अ. २, श्लोक १८ र कल्कि पुराण अ. २, श्लोक ११) सोमतीको अर्थ अरवी भाषामा आमिना हो जुन श्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको माताको नाउँ हो ।

(४) उसको जन्म शंबल ग्राममा हुने छ । (भाग्वत पुराण अ. २, श्लोक १८ र कल्कि पुराण अ. २ श्लोक ४) अरबको प्रसिद्व नगर मक्का जहाँ श्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लमको जन्म भएको थियो त्यस नगरको एउटा नाउँ कुरआनमा अलबलदुलअमीन

आएको छ, जसको अर्थ अमन् र शान्तिको नगर हो, शंवल ग्रामको अर्थ पनि यस्तै हो । (मुहम्मद (सलम.) हिन्दू पुस्तकहरूमा)

यस्तै अरू विशेषताहरू पनि भागवत पुराण, कल्कि पुराण र भविष्य पुराणहरूमा आएका छन् जुन श्री मुहम्मद सल्लल्लाहु अलैहि वसल्लममा पूर्ण रूपले पाइन्छन्, जसबाट यो कुरो स्पष्ट हुन्छ कि श्री मुहम्मद (स.) नै अन्तिम ईश्दूत हुनु हुन्छ जसलाई अल्लाहले प्रलय सम्मका समस्त मानिसहरूको लागि पठाउनु भएको हो ।

यस पुस्तिकाको सारांश यो हो कि इस्लाम नै ईश्वरीय धर्म हो, जसको अर्थ हो अल्लाहलाई नै सम्पूर्ण ब्राहमाण्डको पालनहार, स्वामी, ईश्वर, र सत्य पूज्य मानेर उनैको आदेशहरू अनुसार जीवन व्यतीत गर्नु उनैको पूजा पाठ गर्नु र उनको पूजा पाठ आदिमा अरु कसैलाई सहभागी बनाउनुबाट बँच्नु । र यसै तर्फ सम्पूर्ण ईश्दूत र संदेष्टाहरूले आ-आफना समुदायहरूलाई आमन्तरित गर्नु भएका छन, र उनीहरूको धर्ममा जुन अन्तर थियो त्यो अल्लाहको पूजा पाठ र आराधना गरिने तौर,

तरीका, नियम र विधिमा थियो, जुन उनको आ-आफ्ना समय र स्थानानुसार थियो ।

श्री मुहम्मद सल्लल्लाहु अलैहि व सल्लम नै अल्लाहको अन्तिम नबी हुनु हुन्छ जसको शुभ सूचना केही धार्मिक ग्रन्थहरूमा पाइन्छ । र अन्तिम संदेष्टा भएकोले उहाँको धर्म प्रलय सम्मको लागि र विश्वव्यापी हो, यसले गर्दा उनकै धर्म, नियम र विधिहरूकै अनुसरणबाट उनी पछि प्रलय सम्मका सम्पूर्ण मानिसहरूको लोक र प्रलोक दुबै जीवनमा सफलता र शान्तिको स्थापना हुन सक्छ ।

अन्तमा अल्लाह सित बिन्ति छ कि अल्लाह तआला हामीलाई इस्लाम धर्म बुझ्ने र स्वीकार गरिने साहस प्रदान गरि हामीलाई लोक प्रलोक दुबै ठाउँमा शान्ति सफलता र मुक्ति प्रदान गरुन् । आमीन ।

وصلى الله وسلم على نبينا محمد وعلى آله وصحبه أجمعين .

